فِيهَا سُرُرٌ مَّرْفُوعَةٌ ﴿١٣﴾

१३) र अग्ला-अग्ला पलंगहरू हुनेछन् ।

وَأَكْوَابٌ مَّوْضُوعَةٌ ﴿١٤﴾

१४) प्यालाहरू राम्ररी सजाइएर राखिएका हुनेछन्) ।

وَنَمَارِقُ مَصْفُوفَةٌ ﴿١٥﴾

१५) र क्रमैसित मसनदहरू सजाइएका हुनेछन् ।

وَزَرَابِيُّ مَبْثُوثَةٌ ﴿١٦﴾

१६) र मखमली ओच्छ्यानहरू ओछ्याइएका हुनेछन् ।

أَفَلَا يَنظُرُونَ إِلَى الْإِبِلِ كَيْفَ خُلِقَتْ ﴿١٧﴾

१७) के उनीहरूले ऊँटतिर देख्दैनन् कि तिनीहरू कुन तरिकाले पैदा गरिएका छन् ।

وَإِلَى السَّمَاءِ كَيْفَ رُفِعَتْ ﴿١٨﴾

१८) र आकाशतिर के कस्तो उच्च गरिएकोछ ?

وَإِلَى الْجِبَالِ كَيْفَ نُصِبَتْ ﴿١٩﴾

१९) र पहाडतिर के कुन प्रकारले खडा गरिएकोछ ?

وَإِلَى الْأَرْضِ كَيْفَ سُطِحَتْ ﴿٢٠﴾

२०) र धरतीतिर कि कसरी बिछ्याइएको छ?

فَذَكِّرْ إِنَّمَا أَنتَ مُذَكِّرٌ ﴿٢١﴾

२१) तसर्थ तपाईले उपदेश गर्ने गर्नुस् किनकि तपाई मात्र उपदेश गर्नेवाला हौ ।

لَّسْتَ عَلَيْهِم بِمُصَيْطِرٍ ﴿٢٢﴾

२२) तपाई उनीहरूमाथि संरक्षक होइनौ ।

إِلَّا مَن تَوَلَّىٰ وَكَفَرَ ﴿٢٣﴾

२३) हो, जो विमुख हुन्छ र कुफ्र गर्छ ।

فَيُعَذِّبُهُ اللَّهُ الْعَذَابَ الْأَكْبَرَ ﴿٢٤﴾

२४) त अल्लाहले त्यसलाई ठूलो सजाय दिने छ,

إِنَّ إِلَيْنَا إِيَابَهُمْ ﴿٢٥﴾

२५) निःसन्देह उनीहरूलाई हाम्रो पासमा फर्केर आउनुपर्नेछ ।

ثُمَّ إِنَّ عَلَيْنَا حِسَابَهُم ﴿٢٦﴾

२६) अनि हामीले नै उनको हिसाब लिनेछौं ।

## सूरतुल् फ़ज्र-८९




सूरतुल् फ़ज्र मक्की हो, यसमा ३० आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) फज्र (उषाकाल) को क़सम । — وَالْفَجْرِ ۝١

२) र दश रातहरूको क़सम । — وَلَيَالٍ عَشْرٍ ۝٢

३) र जोड र बिजोड (सम-विसम) को कसम । — وَّالشَّفْعِ وَالْوَتْرِ ۝٣

४) र रातको क़सम, जब यो जान थाल्छ । — وَالَّيْلِ اِذَا يَسْرِ ۝٤

५) के यी कुराहरूको क़सम बुद्धिमानीहरूका लागि पर्याप्त छन् ? — هَلْ فِيْ ذٰلِكَ قَسَمٌ لِّذِيْ حِجْرٍ ۝٥

६) के तपाईले देख्नु भएन कि तपाईको पालनकर्ताले आदहरूसँग के गर्‍यो ? — اَلَمْ تَرَ كَيْفَ فَعَلَ رَبُّكَ بِعَادٍ ۝٦

७) स्तम्भजस्ता "इरम" लामो कदवालाको साथ । — اِرَمَ ذَاتِ الْعِمَادِ ۝٧

८) यी सम्पूर्ण सृष्टिमा यिनीहरूको सदृश कुनै समुदाय पैदा गरिएको थिएन् । — الَّتِيْ لَمْ يُخْلَقْ مِثْلُهَا فِي الْبِلَادِ ۝٨

९) र समूदहरूसँग (के गर्‍यो) जो बेसीमा ठूल ठूला ढुङ्गा काट्दथे । — وَثَمُوْدَ الَّذِيْنَ جَابُوا الصَّخْرَ بِالْوَادِ ۝٩

१०) र फिरऔनसँग जसले मेखहरू राख्दथ्यो ? — وَفِرْعَوْنَ ذِي الْاَوْتَادِ ۝١٠

| | |
|---|---|
| ११) यिनीहरू सबैले देशहरूमा अटेरीपना गरिराखेका थिए । | الَّذِينَ طَغَوْا فِي الْبِلَادِ ﴿١١﴾ |
| १२) र यहां धेरै उत्पातहरू मचाई राखेका थिए । | فَأَكْثَرُوا فِيهَا الْفَسَادَ ﴿١٢﴾ |
| १३) अन्ततः तिम्रो पालनकर्ताले उनीहरूमाथि यातनाको कोर्रा बर्सायो । | فَصَبَّ عَلَيْهِمْ رَبُّكَ سَوْطَ عَذَابٍ ﴿١٣﴾ |
| १४) निःसन्देह तिम्रो पालनकर्ता हेरी घातमाछ । | إِنَّ رَبَّكَ لَبِالْمِرْصَادِ ﴿١٤﴾ |
| १५) तर मानिसको अवस्था यो छ कि जब उसको रबले उसको परीक्षा गर्दछ र उसलाई प्रतिष्ठा र अनुग्रह प्रदान गर्दछ तब त्यसले भन्दछ कि मेरो पालनकर्ताले मलाई प्रतिष्ठित गऱ्यो । | فَأَمَّا الْإِنسَانُ إِذَا مَا ابْتَلَاهُ رَبُّهُ فَأَكْرَمَهُ وَنَعَّمَهُ فَيَقُولُ رَبِّي أَكْرَمَنِ ﴿١٥﴾ |
| १६) र जब उसले उसको परीक्षा यसप्रकार गर्दछ कि उसको जीविका संकुचित गरिदिन्छ । तब उसले भन्दछ कि मेरो रबले मलाई अपमानित गऱ्यो । | وَأَمَّا إِذَا مَا ابْتَلَاهُ فَقَدَرَ عَلَيْهِ رِزْقَهُ فَيَقُولُ رَبِّي أَهَانَنِ ﴿١٦﴾ |
| १७) यस्तो कदापि होइन, बरु तिमीहरूले नै अनाथको सम्मान गर्दैनौ । | كَلَّا بَل لَّا تُكْرِمُونَ الْيَتِيمَ ﴿١٧﴾ |
| १८) र न गरीबलाई खुवाउनको लागि एक-अर्कालाई प्रोत्साहन गर्दछौ । | وَلَا تَحَاضُّونَ عَلَىٰ طَعَامِ الْمِسْكِينِ ﴿١٨﴾ |
| १९) र मृतकको सारा माल समेटी खाइदिन्छौ । | وَتَأْكُلُونَ التُّرَاثَ أَكْلًا لَّمًّا ﴿١٩﴾ |

وَّتُحِبُّوْنَ الْمَالَ حُبًّا جَمًّا ۝٢٠

२०) र धनसित अत्यन्त प्रेम गर्दछौ ।

كَلَّآ اِذَا دُكَّتِ الْاَرْضُ دَكًّا دَكًّا ۝٢١

२१) तसर्थ धरतीलाई जब फुटालेर चुर्ण चुर्ण गरी एक समान गरिनेछ ।

وَّجَآءَ رَبُّكَ وَالْمَلَكُ صَفًّا صَفًّا ۝٢٢

२२) र तेरो पालनकर्ता स्वयं आउने छ र फरिश्ताहरू एक-एक गरी पंक्ति बद्ध भई आउनेछन् ।

وَجِايْٓءَ يَوْمَئِذٍۢ بِجَهَنَّمَ ۙ يَوْمَئِذٍ يَّتَذَكَّرُ الْاِنْسَانُ وَاَنّٰى لَهُ الذِّكْرٰى ۝٢٣

२३) र नर्कलाई त्यसदिन उपस्थित गराइनेछ, त्यसदिन मानिसले चेत्नेछ, तर त्यस दिन चेतेबाट केही फाइदा हुने छैन ।

يَقُوْلُ يٰلَيْتَنِيْ قَدَّمْتُ لِحَيَاتِيْ ۝٢٤

२४) उसले भन्नेछ, काश मैले आफ्नो (यस) जिन्दगीको निम्ति केही अगाडि पठाएको भए ।

فَيَوْمَئِذٍ لَّا يُعَذِّبُ عَذَابَهٗٓ اَحَدٌ ۝٢٥

२५) अनि त्यसदिन अल्लाहको सजाय जस्तो यातना कसैको हुने छैन ।

وَّلَا يُوْثِقُ وَثَاقَهٗٓ اَحَدٌ ۝٢٦

२६) र कोही छैन जसले उसको जस्तो जकडिएर बाँध्न सकोस् ।

يٰٓاَيَّتُهَا النَّفْسُ الْمُطْمَئِنَّةُ ۝٢٧

२७) र हे सन्तुष्ट आत्मा ।

ارْجِعِيْٓ اِلٰى رَبِّكِ رَاضِيَةً مَّرْضِيَّةً ۝٢٨

२८) आफ्नो पालनकर्तातिर तिमी यस किसिमले फर्क कि तिमी ऊसित प्रसन्न र ऊ तिमीसित प्रसन्न ।

فَادْخُلِيْ فِيْ عِبٰدِيْ ۝٢٩

२९) अतः मेरा खास दासहरूमा शम्मिलित भइहाल ।

وَادْخُلِيْ جَنَّتِيْ ۝٣٠

३०) र प्रवेश गर मेरो स्वर्गमा ।

# सूरतुल् बलद-९०




सूरतुल् बलद मक्की हो, यसमा २० आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

| | |
|---|---|
| १) हामीलाई यस नगर (मक्का) को क़सम । | لَآ أُقْسِمُ بِهٰذَا الْبَلَدِ ① |
| २) र तपाई यसै नगरमा त बस्नु हुन्छ । | وَأَنْتَ حِلٌّ بِهٰذَا الْبَلَدِ ② |
| ३) र मानवीय बाबु र उसको सन्ततिको क़सम । | وَوَالِدٍ وَّمَا وَلَدَ ③ |
| ४) निःसन्देह हामीले मानिसलाई धेरै दुःखमा पैदा गरेका छौं । | لَقَدْ خَلَقْنَا الْإِنْسَانَ فِيْ كَبَدٍ ④ |
| ५) के उसले यो ठान्दछ कि उसमाथि कसैको नियन्त्रण छैन । | أَيَحْسَبُ أَنْ لَّنْ يَّقْدِرَ عَلَيْهِ أَحَدٌ ⑤ |
| ६) भन्दछ कि मैले धेरै माल सम्पत्ति खर्च गरिदिएँ । | يَقُوْلُ أَهْلَكْتُ مَالًا لُّبَدًا ⑥ |
| ७) के उसलाई यो लाग्दछ कि कसैले उसलाई देखेन । | أَيَحْسَبُ أَنْ لَّمْ يَرَهٗٓ أَحَدٌ ⑦ |
| ८) के हामीले उसलाई दुईटा आँखा दिएनौं । | أَلَمْ نَجْعَلْ لَّهٗ عَيْنَيْنِ ⑧ |
| ९) र जिब्रो र दुईटा ओठ (दिएनौं) ? | وَلِسَانًا وَّشَفَتَيْنِ ⑨ |
| १०) र उसलाई दुवै मार्ग पनि देखायौं । | وَهَدَيْنٰهُ النَّجْدَيْنِ ⑩ |
| ११) त उसले त्यो घाटीमा पस्न सकेन, | فَلَا اقْتَحَمَ الْعَقَبَةَ ⑪ |
| १२) र तिमीलाई के थाहा कि त्यो घाटी के हो ? | وَمَآ أَدْرٰىكَ مَا الْعَقَبَةُ ⑫ |

فَكُّ رَقَبَةٍ ﴿١٣﴾

१३) (कसैको) गरदनलाई (दासताबाट) मुक्ति दिलाउनु ।

أَوْ إِطْعٰمٌ فِي يَوْمٍ ذِي مَسْغَبَةٍ ﴿١٤﴾

१४) वा भोकको दिन खाना खुवाउनु ।

يَتِيمًا ذَا مَقْرَبَةٍ ﴿١٥﴾

१५) कुनै नातेदार अनाथलाई,

أَوْ مِسْكِينًا ذَا مَتْرَبَةٍ ﴿١٦﴾

१६) वा धूल-धूसरित (फकिर) भिक्षुलाई ।

ثُمَّ كَانَ مِنَ الَّذِينَ ءَامَنُوا وَتَوَاصَوْا بِالصَّبْرِ وَتَوَاصَوْا بِالْمَرْحَمَةِ ﴿١٧﴾

१७) अनि ती मानिसहरूमा शम्मिलित हुन सक्थ्यौ जसले ईमान ल्याउँछन् र एक अर्कालाई धैर्य राख्न र दया गर्नको निम्ति शिक्षा दिन्छन् ।

أُولٰٓئِكَ أَصْحٰبُ الْمَيْمَنَةِ ﴿١٨﴾

१८) यि मानिसहरू नै दायाँ हात वाला हुन् ।

وَالَّذِينَ كَفَرُوا بِـَٔايٰتِنَا هُمْ أَصْحٰبُ الْمَشْـَٔمَةِ ﴿١٩﴾

१९) र जसले हाम्रा आयतहरूलाई मानेनन् उनीहरू बायाँ हातवाला हुन् ।

عَلَيْهِمْ نَارٌ مُّؤْصَدَةٌۢ ﴿٢٠﴾

२०) यिनीहरूमाथि नै आगो हुनेछ जो चारैतिरबाट घेरेको हुने छ ।



## सूरतुश्शम्स-९१



सूरतुश् शम्स मक्की हो, यसमा १५ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

وَالشَّمْسِ وَضُحٰهَا ۝١

१) सूर्यको क़सम र त्यसको तापको ।

وَالْقَمَرِ اِذَا تَلٰهَا ۝٢

२) र चन्द्रको क़सम, जब त्यसको पछाडि उदाउँछ ।

وَالنَّهَارِ اِذَا جَلّٰهَا ۝٣

३) र दिनको क़सम जब सूर्यलाई प्रकट गरिदिन्छ ।

وَالَّيْلِ اِذَا يَغْشٰهَا ۝٤

४) र रातीको क़सम जब उसलाई लुकाउँछ ।

وَالسَّمَآءِ وَمَا بَنٰهَا ۝٥

५) आकाश र त्यसलाई बनाउनेको क़सम ।

وَالْاَرْضِ وَمَا طَحٰهَا ۝٦

६) क़सम छ धरतीको, र त्यसलाई समथर बनाउनेको ।

وَنَفْسٍ وَّمَا سَوّٰهَا ۝٧

७) क़सम छ इन्द्रियहरूको र तिनलाई दुरुस्त बनाउने (काम) को ।

فَاَلْهَمَهَا فُجُوْرَهَا وَتَقْوٰىهَا ۝٨

८) फेरि समझ दियो उसलाई व्यभिचार र त्यसबाट बाँचेर अलग रहनुको ।

قَدْ اَفْلَحَ مَنْ زَكّٰىهَا ۝٩

९) जसले (उस) इन्द्रियलाई शुद्ध राख्यो, त्यो सफल भयो ।

وَقَدْ خَابَ مَنْ دَسّٰىهَا ۝١٠

१०) र जसले त्यसलाई माटोमा मिलायो, त्यो असफल भयो ।

| | |
|---|---|
| ११) समूदले आफ्नो अटेरीपनको कारणले (संदेष्टालाई) झुठ्लायो । | كَذَّبَتْ ثَمُودُ بِطَغْوٰىهَآ ﴿١١﴾ |
| १२) जब उनीहरूमध्येबाट सबैभन्दा दुर्भाग्यशाली उभियो । | إِذِ انۢبَعَثَ أَشْقٰىهَا ﴿١٢﴾ |
| १३) (तब) अल्लाहका रसूलले उसलाई भने, "सावधान अल्लाहको ऊँटनी र उसले पिउने पालोको रक्षा गर" । | فَقَالَ لَهُمْ رَسُولُ اللّٰهِ نَاقَةَ اللّٰهِ وَسُقْيٰهَا ﴿١٣﴾ |
| १४) तर उनीहरूले आफ्ना पैगम्बरलाई असत्य सम्झेर त्यस ऊँट्नीको कुर्कुच्चाको नसा काटिदिए, तब अल्लाहले उनीहरूका पापको कारणले उनीहरूमाथि बर्बादी पठायो र फेरि सबैलाई नष्ट गरी त्यस बस्तीलाई बराबर गरिदियो । | فَكَذَّبُوهُ فَعَقَرُوهَا فَدَمْدَمَ عَلَيْهِمْ رَبُّهُمْ بِذَنۢبِهِمْ فَسَوّٰىهَا ﴿١٤﴾ |
| १५) उसलाई त्यसको विनाशकारी परिणामको कुनै भय छैन । | وَلَا يَخَافُ عُقْبٰهَا ﴿١٥﴾ |



# सूरतुल् लैल-९२



सूरतुल् लैल मक्की हो, यसमा २१ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) रात्रीको क़सम, जब ढाक्छ ।

وَالَّيْلِ اِذَا يَغْشٰى ۙ﴿۱﴾

२) र दिनको क़सम, जब कि चम्किन्छ ।

وَالنَّهَارِ اِذَا تَجَلّٰى ۙ﴿۲﴾

३) र त्यस हस्तीको क़सम, जसले पुरुष र स्त्रीको सृष्टि गऱ्यो ।

وَمَا خَلَقَ الذَّكَرَ وَالْاُنْثٰٓى ۙ﴿۳﴾

४) निःसंदेह तिम्रो प्रयास भिन्न-भिन्न छ ।

اِنَّ سَعْيَكُمْ لَشَتّٰى ؕ﴿۴﴾

५) तसर्थ जसले (अल्लाहको मार्गमा धनमाल) दियो र डर मान्यो (आफ्नो पालनकर्ताको) ।

فَاَمَّا مَنْ اَعْطٰى وَاتَّقٰى ۙ﴿۵﴾

६) र राम्रो कुराको पुष्टि गर्दै गऱ्यो ।

وَصَدَّقَ بِالْحُسْنٰى ۙ﴿۶﴾

७) त हामीले पनि उसलाई सजिलो बाटोको सुविधा प्रदान गर्नेछौं ।

فَسَنُيَسِّرُهٗ لِلْيُسْرٰى ؕ﴿۷﴾

८) तर जसले कञ्जूसी गऱ्यो र जो लापरवाही देखायो ।

وَاَمَّا مَنْۢ بَخِلَ وَاسْتَغْنٰى ۙ﴿۸﴾

९) र असल कुराको उपहास गऱ्यो ।

وَكَذَّبَ بِالْحُسْنٰى ۙ﴿۹﴾

१०) त हामीले पनि उसलाई अभाव र कठिनाईका सामग्री प्रदान गर्नेछौं ।

فَسَنُيَسِّرُهٗ لِلْعُسْرٰى ؕ﴿۱۰﴾

११) त्यसको धनमाल, ऊ खाल्डोमा लड्दा उसको कुनै पनि काम आउने छैन ।

وَمَا يُغْنِيْ عَنْهُ مَالُهٗٓ اِذَا تَرَدّٰى ؕ﴿۱۱﴾

إِنَّ عَلَيْنَا لَلْهُدَىٰ ﴿١٢﴾

१२) निश्चय नै हाम्रो जिम्मा त मार्ग देखाउनु छ ।

وَإِنَّ لَنَا لَلْآخِرَةَ وَالْأُولَىٰ ﴿١٣﴾

१३) र वास्तवमा हाम्रै अधिकारमा छ परलोक र संसार ।

فَأَنذَرْتُكُمْ نَارًا تَلَظَّىٰ ﴿١٤﴾

१४) मैले त तिमीलाई प्रज्वलित आगोबाट सावधान गराइदिएँ ।

لَا يَصْلَاهَا إِلَّا الْأَشْقَى ﴿١٥﴾

१५) जसमा मात्र त्यही पर्नेछ जो साह्रै नै अभागा हुनेछ ।

الَّذِي كَذَّبَ وَتَوَلَّىٰ ﴿١٦﴾

१६) जसले झुठ्लायो र (उसको अनुशरणबाट) मुख फर्कायो ।

وَسَيُجَنَّبُهَا الْأَتْقَى ﴿١٧﴾

१७) र जो बडो संयमी हुनेछ, त्यसलाई त्यसबाट टाडा राखिनेछ ।

الَّذِي يُؤْتِي مَالَهُ يَتَزَكَّىٰ ﴿١٨﴾

१८) जसले आफ्नो सम्पत्ति दिएर आफूलाई शुद्ध बनाउँदछ ।

وَمَا لِأَحَدٍ عِندَهُ مِن نِّعْمَةٍ تُجْزَىٰ ﴿١٩﴾

१९) र (यसकारण) दिंदैन कि उसमाथि कसैको उपकार छ । जसको सट्टामा कुनै किसिमको बदलाको आशा गरिएको हुन्छ ।

إِلَّا ابْتِغَاءَ وَجْهِ رَبِّهِ الْأَعْلَىٰ ﴿٢٠﴾

२०) बरु मात्र उसको आफ्नो महान पालनकर्ताको अनुहारको (दर्शनका) लागि (अर्थात रबको प्रसन्नता पाउनको लागि) ।

وَلَسَوْفَ يَرْضَىٰ ﴿٢١﴾

२१) निःसंदेह त्यो (अल्लाह) शीघ्र नै राजी भैहाल्नेछ ।

## सूरतुज् जुहा-९३



सूरतुज् जुहा मक्की हो, यसमा ११ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) सूर्यको माथी भइहालने समय (चाश्त) को सौगन्ध । — وَالضُّحٰى ۝١

२) र क़सम छ, रात्री को जब छाउँछ । — وَالَّيْلِ اِذَا سَجٰى ۝٢

३) तिम्रो पालनकर्ताले न त तिमीलाई छाडेको छ र न उदासीन भएको छ । — مَا وَدَّعَكَ رَبُّكَ وَمَا قَلٰى ۝٣

४) निश्चित रूपले तिम्रो निम्ति पहिलो भन्दा परिणाम राम्रो हुनेछ । — وَلَلْاٰخِرَةُ خَيْرٌ لَّكَ مِنَ الْاُوْلٰى ۝٤

५) तिम्रो पालनकर्ताले शीघ्र नै तिमीलाई (पुरस्कार) प्रदान गर्ने छ त तिमी प्रसन्न भइहाल्नेछौ । — وَلَسَوْفَ يُعْطِيْكَ رَبُّكَ فَتَرْضٰى ۝٥

६) के उसले तिमीलाई अनाथ पाएर शरण दिएन ? — اَلَمْ يَجِدْكَ يَتِيْمًا فَاٰوٰى ۝٦

७) र तिमीलाई मार्ग विचलित देखेर सही बाटो देखाएन । — وَوَجَدَكَ ضَآلًّا فَهَدٰى ۝٧

८) र तिमीलाई कमजोर पाएर बलियो बनाएन । — وَوَجَدَكَ عَآئِلًا فَاَغْنٰى ۝٨

९) तसर्थ तिमीले पनि अनाथ माथि अत्याचार नगर्नु । — فَاَمَّا الْيَتِيْمَ فَلَا تَقْهَرْ ۝٩

१०) र माँग्नेवालालाई हप्काउने नगर्नु । — وَاَمَّا السَّآئِلَ فَلَا تَنْهَرْ ۝١٠

११) र आफ्ना पालनकर्ताको अनुकम्पालाई वर्णन गर्दैगर्नु । — وَاَمَّا بِنِعْمَةِ رَبِّكَ فَحَدِّثْ ۝١١

# सूरतुश्शरह-९४




सूरतुश्शरह मक्की हो, यसमा ८ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

اَلَمْ نَشْرَحْ لَكَ صَدْرَكَ ۝١

१) के हामीले तिम्रो छाती खोलिदिएनौं ?

وَوَضَعْنَا عَنْكَ وِزْرَكَ ۝٢

२) र तिमी माथिबाट तिम्रो बोझ पनि हामीले उतारिदियौं ।

الَّذِيْٓ اَنْقَضَ ظَهْرَكَ ۝٣

३) जसले तिम्रो कम्मर भाँचिराखेको थियो ।

وَرَفَعْنَا لَكَ ذِكْرَكَ ۝٤

४) र हामीले तिम्रो मर्यादा उच्च पार्‍यौं ।

فَاِنَّ مَعَ الْعُسْرِ يُسْرًا ۝٥

५) निःसन्देह कठिनाइका साथमा सरलता पनि छ ।

اِنَّ مَعَ الْعُسْرِ يُسْرًا ۝٦

६) बेशक कष्टको साथ सजिलो छ ।

فَاِذَا فَرَغْتَ فَانْصَبْ ۝٧

७) जब तिमीलाई फुर्सद हुन्छ, तब इबादतमा परिश्रम गर,

وَاِلٰى رَبِّكَ فَارْغَبْ ۝٨

८) र आफ्नो पालनकर्तातिरै प्रवृत्त भइहाल्ने गर ।



# सूरतुत्तीन-९५

سُوْرَةُ التِّيْنِ

सूरतुत्तीन मक्की हो, यसमा ८ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

وَالتِّيْنِ وَالزَّيْتُوْنِ ۙ﴿١﴾

१) इंजीरको क़सम र जैतूनको ।

وَطُوْرِ سِيْنِيْنَ ۙ﴿٢﴾

२) र तूरे सीनीनको ।

وَهٰذَا الْبَلَدِ الْاَمِيْنِ ۙ﴿٣﴾

३) र यस शान्तिपूर्ण शहरको (मक्काको) क़सम ।

لَقَدْ خَلَقْنَا الْاِنْسَانَ فِيْٓ اَحْسَنِ تَقْوِيْمٍ ﴿٤﴾

४) हामीले निःसन्देह मनुष्यलाई सर्वोत्तम आकारमा बनायौं ।

ثُمَّ رَدَدْنٰهُ اَسْفَلَ سٰفِلِيْنَ ۙ﴿٥﴾

५) फेरि निकृष्टतम दशातिर फर्कायौं ।

اِلَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ فَلَهُمْ اَجْرٌ غَيْرُ مَمْنُوْنٍ ۗ﴿٦﴾

६) तर ती मानिसहरू जसले ईमान ल्याए र जसले असल कर्म गरे, उनीहरूको लागि कहिल्यै समाप्त नहुने प्रतिफल छ ।

فَمَا يُكَذِّبُكَ بَعْدُ بِالدِّيْنِ ۗ﴿٧﴾

७) अनि (हे आदमको सन्तति !) तिमीले प्रतिफलको दिनलाई असत्य ठहऱ्याउँन, कुन कुराले उत्प्रेरित गर्दछ ।

اَلَيْسَ اللّٰهُ بِاَحْكَمِ الْحٰكِمِيْنَ ۧ﴿٨﴾

८) के अल्लाह सबै हाकिमहरूभन्दा ठूलो हाकिम होइन ?

# सूरतुल् अ़लक़्-९६




सूरतुल् अ़लक़् मक्की हो, यसमा १९ आयतहरू छन् ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम — بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

| | |
|---|---|
| اقْرَأْ بِاسْمِ رَبِّكَ الَّذِي خَلَقَ ﴿١﴾ | १) आफ्नो पालनकर्ताको नाम लिएर पढ, जसले सृष्टि गऱ्यो । |
| خَلَقَ الْإِنسَانَ مِنْ عَلَقٍ ﴿٢﴾ | २) जसले मानिसलाई रगतको थोपाबाट बनायो । |
| اقْرَأْ وَرَبُّكَ الْأَكْرَمُ ﴿٣﴾ | ३) तिमी पढ्दै गर तिम्रो पालनकर्ता बडो दयावान छ । |
| الَّذِي عَلَّمَ بِالْقَلَمِ ﴿٤﴾ | ४) जसले कलमको माध्यमबाट शिक्षा प्रदान गऱ्यो । |
| عَلَّمَ الْإِنسَانَ مَا لَمْ يَعْلَمْ ﴿٥﴾ | ५) जसले मानिसलाई त्यो ज्ञान प्रदान गऱ्यो, जुन उसले जान्दैनथ्यो । |
| كَلَّا إِنَّ الْإِنسَانَ لَيَطْغَىٰ ﴿٦﴾ | ६) तर मानिस उल्लंघनकारी भइहाल्दछ । |
| أَن رَّآهُ اسْتَغْنَىٰ ﴿٧﴾ | ७) यसकारण कि उसले आफूलाई आत्मनिर्भर देख्दछ । |
| إِنَّ إِلَىٰ رَبِّكَ الرُّجْعَىٰ ﴿٨﴾ | ८) यसमा कुनै सन्देह छैन कि तिम्रो पालनकर्तातिर नै फर्किजानु पर्नेछ । |
| أَرَأَيْتَ الَّذِي يَنْهَىٰ ﴿٩﴾ | ९) के तिमीले त्यस व्यक्तिलाई देख्यौ ? जसले (अल्लाहको) सेवकलाई मनाही गर्दछ । |
| عَبْدًا إِذَا صَلَّىٰ ﴿١٠﴾ | १०) (अर्थात्) एक अल्लाहको भक्तलाई जबकी उसले नमाज पढ्न थाल्छ । |

११) तिम्रो के विचार छ ? यदि त्यो सोझो मार्गमा छ भने ।

اَرَءَيۡتَ اِنۡ كَانَ عَلَى الۡهُدٰٓىۙ ﴿۱۱﴾

१२) वा संयमित रहनुको आदेश दिन्छ भने ।

اَوۡ اَمَرَ بِالتَّقۡوٰىؕ ﴿۱۲﴾

१३) अच्छा हेर त यदि त्यस (रोक्नेवाला)ले झूठ ठान्यो र मुख फर्काएको भए त,

اَرَءَيۡتَ اِنۡ كَذَّبَ وَتَوَلّٰىؕ ﴿۱۳﴾

१४) के उसले जानेन कि अल्लाहले राम्ररी उसलाई देखिरहेकोछ ।

اَلَمۡ يَعۡلَمۡ بِاَنَّ اللّٰهَ يَرٰىؕ ﴿۱۴﴾

१५) निःसंदेह यदि त्यसले मानेन भने हामीले उसलाई उसको टाउकोको (निधारको) कपाल समातेर घिसार्ने छौं ।

كَلَّا لَئِنۡ لَّمۡ يَنۡتَهِ ۙ لَنَسۡفَعًۢا بِالنَّاصِيَةِۙ ﴿۱۵﴾

१६) यस्तो टाउको जो झूठो अपराधी छ ।

نَاصِيَةٍ كَاذِبَةٍ خَاطِئَةٍۚ ﴿۱۶﴾

१७) यिनीहरू आफ्ना साथीहरूको परिषद्लाई बोलाऊन् ।

فَلۡيَدۡعُ نَادِيَهٗۙ ﴿۱۷﴾

१८) हामीले पनि आफ्नो सजायका दूतहरूलाई बोलाउनेछौं ।

سَنَدۡعُ الزَّبَانِيَةَۙ ﴿۱۸﴾

१९) खबरदार ! उसको भनाई कदापि नमान्नु र सजदा गर्नु र (अल्लाहको) निकटता प्राप्त गर्दैरहनु ।

كَلَّا ؕ لَا تُطِعۡهُ وَاسۡجُدۡ وَاقۡتَرِبْ ۩ ﴿۱۹﴾



# सूरतुल् क़द्र-९७




सूरतुल् क़द्र मक्की हो, यसमा ५ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

إِنَّا أَنزَلْنَاهُ فِي لَيْلَةِ الْقَدْرِ ۝١

१) हामीले यस (कुरआन) लाई क़द्रको रातमा अवतरित गर्‍यौं ।

وَمَا أَدْرَاكَ مَا لَيْلَةُ الْقَدْرِ ۝٢

२) र तिमीलाई के थाहा कि शबे क़द्र (गौरवको रात्री) के हो ?

لَيْلَةُ الْقَدْرِ خَيْرٌ مِّنْ أَلْفِ شَهْرٍ ۝٣

३) शबे क़द्र एक हजार महीनाभन्दा राम्रो छ ।

تَنَزَّلُ الْمَلَائِكَةُ وَالرُّوحُ فِيهَا بِإِذْنِ رَبِّهِم مِّن كُلِّ أَمْرٍ ۝٤

४) यसमा रूहुल अमीन (जिब्राइल) र फरिश्ताहरू प्रत्येक काम सम्पन्न गर्नको लागि, आफ्नो पालनकर्ताको आदेशबाट अवतरित हुन्छन् ।

سَلَامٌ هِيَ حَتَّىٰ مَطْلَعِ الْفَجْرِ ۝٥

५) यो रात पूर्णतया शान्ति र भलाईको हो, उषाकालको उदय हुनेसम्म ।



# सूरतुल् बैयिनः -९८



सूरतुल् बैयिनह मक्की हो, यसमा ८ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

لَمْ يَكُنِ الَّذِيْنَ كَفَرُوْا مِنْ اَهْلِ الْكِتٰبِ وَالْمُشْرِكِيْنَ مُنْفَكِّيْنَ حَتّٰى تَاْتِيَهُمُ الْبَيِّنَةُ ۝١

१) अहले किताब र मुश्रिकहरू कुफ्रबाट अलग हुनेवाला छैनन् जबसम्मकि उनको पासमा स्पष्ट प्रमाण आउँदैन ।

رَسُوْلٌ مِّنَ اللّٰهِ يَتْلُوْا صُحُفًا مُّطَهَّرَةً ۝٢

२) अल्लाहको तर्फबाट एउटा रसूल जो पवित्र पृष्ठहरूलाई पढोस ।

فِيْهَا كُتُبٌ قَيِّمَةٌ ۝٣

३) जसमा असल र ठीक आदेशहरू अंकित छन् ।

وَمَا تَفَرَّقَ الَّذِيْنَ اُوْتُوا الْكِتٰبَ اِلَّا مِنْۢ بَعْدِ مَا جَآءَتْهُمُ الْبَيِّنَةُ ۝٤

४) र किताबवालाहरू आफु समक्ष स्पष्ट प्रमाण आइसकेपछि विभाजित भएका छन् ।

وَمَآ اُمِرُوْٓا اِلَّا لِيَعْبُدُوا اللّٰهَ مُخْلِصِيْنَ لَهُ الدِّيْنَ ۙ حُنَفَآءَ وَيُقِيْمُوا الصَّلٰوةَ وَيُؤْتُوا الزَّكٰوةَ وَذٰلِكَ دِيْنُ الْقَيِّمَةِ ۝٥

५) उनीहरूलाई यही मात्र आदेश दिइएको थियो कि निष्ठापूर्वक अल्लाहको उपासना गरुन् र एकाग्र भएर उसैको लागि धर्मलाई शुद्ध राखुन । र निष्ठाका साथ नमाज़ पढुन् र ज़कात देऊन् र यही नै सबैको साँचो धर्म हो ।

اِنَّ الَّذِيْنَ كَفَرُوْا مِنْ اَهْلِ الْكِتٰبِ وَالْمُشْرِكِيْنَ فِيْ نَارِ جَهَنَّمَ خٰلِدِيْنَ فِيْهَا ۗ اُولٰٓئِكَ هُمْ شَرُّ الْبَرِيَّةِ ۝٦

६) किताबवालाहरू मध्येबाट जो काफिर छन् र मुश्रिकहरू सबै नर्कको आगोमा (पर्नेछन् र) तिनीहरू सधैं त्यसमा रहनेछन् ।

यी मानिसहरू सबै प्राणीभन्दा नराम्रा हुन् ।

إِنَّ الَّذِينَ آمَنُوا وَعَمِلُوا الصَّالِحَاتِ أُولَٰئِكَ هُمْ خَيْرُ الْبَرِيَّةِ ۝٧

७) र जसले ईमान ल्याए र असल कर्म गरिरहे, तिनीहरू सम्पूर्ण प्राणीहरूमा राम्रा हुन् ।

جَزَاؤُهُمْ عِندَ رَبِّهِمْ جَنَّاتُ عَدْنٍ تَجْرِي مِن تَحْتِهَا الْأَنْهَارُ خَالِدِينَ فِيهَا أَبَدًا ۖ رَّضِيَ اللَّهُ عَنْهُمْ وَرَضُوا عَنْهُ ۚ ذَٰلِكَ لِمَنْ خَشِيَ رَبَّهُ ۝٨

८) उनीहरूको बदला उनीहरूको पालनकर्ता कहाँ सधैं बास गर्ने बगैंचाहरू हुन्, जसमुनि नहरहरू बगिराखेका हुने छन् । सधैं सधैं तिनीहरूमा रहनेछन् । अल्लाह उनीहरूसित खुशी भयो र उनीहरू उससित खुशी भए, यो प्रतिफल उसको निम्ति हो, जो आफ्नो पालनकर्तासित डर मान्छ ।



## सूरतुज् ज़ल्ज़लः -९९




सूरतुज् ज़ल्ज़लः मदनी हो, यसमा ८ आयतहरू छन् ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम — بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

إِذَا زُلْزِلَتِ الْأَرْضُ زِلْزَالَهَا ﴿١﴾

१) जब धरती पूर्ण रूपले (भूकम्पबाट) प्रकम्पित गराइहालिनेछ ।

وَأَخْرَجَتِ الْأَرْضُ أَثْقَالَهَا ﴿٢﴾

२) र पृथ्वीले आफ्नो (भित्रको) बोझ बाहिर निकालिदिनेछ ।

وَقَالَ الْإِنْسَانُ مَا لَهَا ﴿٣﴾

३) मानिसले भन्न थाल्छ कि यसलाई के भएको छ ?

يَوْمَئِذٍ تُحَدِّثُ أَخْبَارَهَا ﴿٤﴾

४) त्यसदिन पृथ्वीले आफ्नो सबै कुराहरू वर्णन गर्नेछ ।

بِأَنَّ رَبَّكَ أَوْحَىٰ لَهَا ﴿٥﴾

५) यसकारण कि तिम्रो पालनकर्ताले उसलाई आदेश पठाएको हुनेछ ।

يَوْمَئِذٍ يَصْدُرُ النَّاسُ أَشْتَاتًا لِيُرَوْا أَعْمَالَهُمْ ﴿٦﴾

६) त्यसदिन मानिसहरू समूह-समूह गरी फिर्ता आउनेछन् ताकि उनीलाई उनको कर्म पत्री देखाइदिइयोस् ।

فَمَنْ يَعْمَلْ مِثْقَالَ ذَرَّةٍ خَيْرًا يَرَهُ ﴿٧﴾

७) अतः जसले अलिकति पनि नेकी(पुण्य) गरेको हुनेछ, उसले त्यसलाई देखिहाल्नेछ ।

وَمَنْ يَعْمَلْ مِثْقَالَ ذَرَّةٍ شَرًّا يَرَهُ ﴿٨﴾

८) र जसले अलिकति पनि नराम्रो काम गरेको हुनेछ, उसले त्यसलाई देखिहाल्नेछ ।

# सूरतुल् आदियात-१००



सूरतुल् आदियात मक्की हो, यसमा ११ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।

وَالْعٰدِيٰتِ ضَبْحًا ①

१) ती घोडाहरूको कसम जो तीव्र गतिले हाफ्दै दगुर्छन् ।

فَالْمُوْرِيٰتِ قَدْحًا ②

२) अनि ढुङ्गामा नालको ठक्करबाट झिल्काहरू निकाल्नेवालाहरूको कसम ।

فَالْمُغِيْرٰتِ صُبْحًا ③

३) अनि प्रातः को समय धावा बोल्नेहरूको क़सम ।

فَاَثَرْنَ بِهٖ نَقْعًا ④

४) अनि जो त्यस समयमा धूलकणहरू उडाउँदछन् ।

فَوَسَطْنَ بِهٖ جَمْعًا ⑤

५) अनि त्यसबखत सेनाहरू भित्र पसी दिन्छन् ।

اِنَّ الْاِنْسَانَ لِرَبِّهٖ لَكَنُوْدٌ ⑥

६) निःसन्देह मानिस आफ्नो पालनकर्ताको बडो अकृतज्ञ छ ।

وَاِنَّهٗ عَلٰى ذٰلِكَ لَشَهِيْدٌ ⑦

७) र निश्चय नै ऊ स्वयम् पनि यस ऊपर साक्षी छ ।

وَاِنَّهٗ لِحُبِّ الْخَيْرِ لَشَدِيْدٌ ⑧

८) त्यो धनको मोहमा बडो दृढ छ ।

اَفَلَا يَعْلَمُ اِذَا بُعْثِرَ مَا فِى الْقُبُوْرِ ⑨

९) के त्यसले त्यस समयलाई जान्दैन जब चिहानमा जे छन्, उनीहरू बाहिर निकालिनेछन् ।

وَحُصِّلَ مَا فِى الصُّدُوْرِ ⑩

१०) र जुन (रहस्य) हृदयहरूमा छन्, ती प्रकट गरिनेछन् ।

إِنَّ رَبَّهُم بِهِمْ يَوْمَئِذٍ لَّخَبِيرٌ ⑪

११) नि:सन्देह उनको पालनकर्ताले त्यसदिन उनको अवस्था सँग राम्ररी परिचित हुनेछ ।



## सूरतुल् क़ारिअः -१०१




सूरतुल् क़ारिअः मक्की हो, यसमा ११ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

اَلْقَارِعَةُ ۝١

१) (त्यो) खडखडाउने चर्को स्वर गर्नेवाला ।

مَا الْقَارِعَةُ ۝٢

२) खडखडाउने के हो ?

وَمَآ اَدْرٰىكَ مَا الْقَارِعَةُ ۝٣

३) र तिमीलाई के थाहा कि त्यो खडखडाई दिने के हो ?

يَوْمَ يَكُوْنُ النَّاسُ كَالْفَرَاشِ الْمَبْثُوْثِ ۝٤

४) जुन दिन मानिसहरू यस्ता हुन्छन् जस्तो कि छरिएका भुसुनाहरू ।

وَتَكُوْنُ الْجِبَالُ كَالْعِهْنِ الْمَنْفُوْشِ ۝٥

५) र पहाडहरू धुनिएका रुङ्ग विरङ्गका ऊन, जस्ता हुने छन् ।

فَاَمَّا مَنْ ثَقُلَتْ مَوَازِيْنُهٗ ۝٦

६) फेरि जसका (कर्महरूको) वज़न गरुङ्गो हुनेछ,

فَهُوَ فِيْ عِيْشَةٍ رَّاضِيَةٍ ۝٧

७) ऊ त इच्छित आरामको जिन्दगीमा हुनेछन् ।

وَاَمَّا مَنْ خَفَّتْ مَوَازِيْنُهٗ ۝٨

८) र जसका वज़न हलका हुनेछन्,

فَاُمُّهٗ هَاوِيَةٌ ۝٩

९) उनीहरूको फर्केर जाने ठाउँ "हाविया" (गहिरो खाल्डो) हो ।

وَمَآ اَدْرٰىكَ مَا هِيَهْ ۝١٠

१०) र तिमीलाई के थाहा कि "हाविया" के हो ?

نَارٌ حَامِيَةٌ ۝١١

११) (त्यो) प्रज्वलित आगो हो ।

# सूरतुत् तकासुर-१०२




सूरतुत् तकासुर मक्की हो, यसमा ८ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) तिमीलाई धेरैको (सम्पत्तिको) इच्छाले असावधान गरिदिएको छ ।

اَلْهٰىكُمُ التَّكَاثُرُ ﴿١﴾

२) यहाँसम्मकि तिमी कब्रस्तान पुगिहाल्यौ ।

حَتّٰى زُرْتُمُ الْمَقَابِرَ ﴿٢﴾

३) होइन, तिमीलाई अत्यन्त छिटै थाहा भइहाल्नेछ ।

كَلَّا سَوْفَ تَعْلَمُوْنَ ﴿٣﴾

४) फेरि केही छैन, तिमीलाई शीघ्र नै थाहा भइहाल्छ ।

ثُمَّ كَلَّا سَوْفَ تَعْلَمُوْنَ ﴿٤﴾

५) होइन तिमी यकीनको साथ थाहा पाउँछौ ।

كَلَّا لَوْ تَعْلَمُوْنَ عِلْمَ الْيَقِيْنِ ﴿٥﴾

६) त तिमीले अवश्य नै नर्क देख्नेछौ ।

لَتَرَوُنَّ الْجَحِيْمَ ﴿٦﴾

७) अनि तिमीले यसलाई विश्वासको आँखाले देख्ने छौ ।

ثُمَّ لَتَرَوُنَّهَا عَيْنَ الْيَقِيْنِ ﴿٧﴾

८) अनि निश्चय नै त्यस दिन तिमीसित (अल्लाहका) अनुकम्पहरूको बारेमा सोधपूछ हुनेछ ।

ثُمَّ لَتُسْئَلُنَّ يَوْمَئِذٍ عَنِ النَّعِيْمِ ﴿٨﴾



## सूरतुल् अस्र-१०३




सूरतुल् अस्र मक्की हो, यसमा ३ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) समय (युग) को क़सम।

وَالْعَصْرِ ۝١

२) वास्तवमा मानिसहरू पूरै घाटामा छन् ।

اِنَّ الْاِنْسَانَ لَفِيْ خُسْرٍ ۝٢

३) ती मानिसहरू बाहेक, जसले ईमान ल्याए र असल कर्म गरिरहे र (जसले) आपसमा सत्य कुराको आग्रह र एक अर्कालाई धैर्यको ताकेदा गरिरहे ।

اِلَّا الَّذِيْنَ اٰمَنُوْا وَعَمِلُوا الصّٰلِحٰتِ وَتَوَاصَوْا بِالْحَقِّ ۙ وَتَوَاصَوْا بِالصَّبْرِ ۝٣



# सूरतुल् हुमज़ः -१०४




सूरतुल् हुमज़ः, मक्की हो, यसमा ९ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

وَيْلٌ لِّكُلِّ هُمَزَةٍ لُّمَزَةِ ۝١

१) बर्बादी छ, त्यस्तो प्रत्येक मानिसको जो अर्काको अवगुण खोज्ने गर्दछ र चुकुली गरी रहन्छ ।

الَّذِىْ جَمَعَ مَالًا وَّعَدَّدَهٗ ۝٢

२) जसले मालसम्पत्ति थुपार्दै जान्छ र त्यसलाई गन्दै राख्छ ।

يَحْسَبُ اَنَّ مَالَهٗٓ اَخْلَدَهٗ ۝٣

३) उसले ठान्छ कि उसको सम्पत्ति उससँग सधैं रहनेछ ।

كَلَّا لَيُنْۢبَذَنَّ فِى الْحُطَمَةِ ۝٤

४) कदापि होइन, यो त अवश्य टुक्रा-टुक्रा पारिदिने आगोमा फ्याँकिनेछ ।

وَمَآ اَدْرٰىكَ مَا الْحُطَمَةُ ۝٥

५) र तिमीलाई के थाह कि यस्तो (आगो) हुत्मा के हो ?

نَارُ اللّٰهِ الْمُوْقَدَةُ ۝٦

६) त्यो अल्लाहद्वारा प्रज्वलित आगो हो ।

الَّتِىْ تَطَّلِعُ عَلَى الْاَفْـِٕدَةِ ۝٧

७) जो छातीमाथि चढ्दै जानेछ ।

اِنَّهَا عَلَيْهِمْ مُّؤْصَدَةٌ ۝٨

८) र (त्यो आगो) उनीमाथि,सबै दिशाबाट बन्द हुन्छ ।

فِىْ عَمَدٍ مُّمَدَّدَةٍ ۝٩

९) ठूलाठूला स्तम्भहरूमा ।

# सूरतुल् फील-१०५




सूरतुल् फ़ील मक्की हो, यसमा ५ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

أَلَمْ تَرَ كَيْفَ فَعَلَ رَبُّكَ بِأَصْحٰبِ الْفِيلِ ﴿١﴾

१) के तिमीले देखेनौ कि तिम्रो पालनकर्ताले हातीवालाहरूसँग के गऱ्यो ?

أَلَمْ يَجْعَلْ كَيْدَهُمْ فِي تَضْلِيلٍ ﴿٢﴾

२) के उसले उनीहरूको दुष्चक्रलाई व्यर्थ बनाइदिएन ?

وَأَرْسَلَ عَلَيْهِمْ طَيْرًا أَبَابِيلَ ﴿٣﴾

३) र उनीहरूमाथि समूहका समूह पंक्षीहरू पठाइदियो ।

تَرْمِيهِمْ بِحِجَارَةٍ مِّنْ سِجِّيلٍ ﴿٤﴾

४) जो उनीहरूलाई माटो र पत्थरको डल्लाले हानी रहेका थिए ।

فَجَعَلَهُمْ كَعَصْفٍ مَّأْكُولٍ ﴿٥﴾

५) जसले उनीहरूलाई चपाइको भुस जस्तो बनाइदिए ।



# सूरतु कुरैश-१०६




सूरतु कुरैश मक्की हो, यसमा ४ आयतहरू छन्।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) कुरैशलाई परिचित गर्नुका लागि।

لِاِيْلٰفِ قُرَيْشٍ ۝١

२) उनीहरूलाई जाडो र गर्मीको समयमा यात्रा सँग परिचित गराउनका लागि।

اٖلٰفِهِمْ رِحْلَةَ الشِّتَآءِ وَالصَّيْفِ ۝٢

३) अत: उनीहरूलाई आवश्यक छ कि यसै घरको रबको पूजा गरुन्।

فَلْيَعْبُدُوْا رَبَّ هٰذَا الْبَيْتِ ۝٣

४) अत: जसले उनीहरूलाई भोकमा खाना खुवायो र डर र भयबाट अमन चैन प्रदान गऱ्यो।

الَّذِيْٓ اَطْعَمَهُمْ مِّنْ جُوْعٍ ۙ وَّاٰمَنَهُمْ مِّنْ خَوْفٍ ۝٤



# सूरतुल् माऊन-१०७




सूरतुल् माऊन मक्की हो, यसमा ७ आयतहरू छन् ।

| | |
|---|---|
| **शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।** | بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ |
| १) तिमीले त्यसलाई देख्यौ, जसले प्रतिफल (को दिनलाई) झूठा ठहराउँदछ । | اَرَءَيْتَ الَّذِيْ يُكَذِّبُ بِالدِّيْنِ ① |
| २) उही त हो जसले अनाथहरूलाई धक्का दिन्छ । | فَذٰلِكَ الَّذِيْ يَدُعُّ الْيَتِيْمَ ② |
| ३) र निमुखाहरूलाई ख्वाउने कुरामा प्रोत्साहित गर्दैन । | وَلَا يَحُضُّ عَلٰى طَعَامِ الْمِسْكِيْنِ ③ |
| ४) अतः अफशोच छ ती नमाज़ीहरूलाई (र वैल नामक नर्कको ठाउँ) छ । | فَوَيْلٌ لِّلْمُصَلِّيْنَ ④ |
| ५) जो आफ्नो नमाज़ प्रति असावधान छन् । | الَّذِيْنَ هُمْ عَنْ صَلَاتِهِمْ سَاهُوْنَ ⑤ |
| ६) जसले आडम्बरका काम गर्दछन् । | الَّذِيْنَ هُمْ يُرَآءُوْنَ ⑥ |
| ७) र गर्नु पर्ने कुराहरूबाट रोक्छन् । | وَيَمْنَعُوْنَ الْمَاعُوْنَ ⑦ |



## सूरतुल् कौसर-१०८




सूरतुल् कौसर मक्की हो, यसमा ३ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) नि:सन्देह हामीले तिमीलाई "हौजे कौसर" (अनुकम्पाहरू) प्रदान गरेका छौं ।

إِنَّآ أَعْطَيْنَٰكَ ٱلْكَوْثَرَ ①

२) अत: आफ्ना पालनकर्ताको लागि नमाज़ पढ्ने गर र उसको निम्ति कुर्बानी गर ।

فَصَلِّ لِرَبِّكَ وَٱنْحَرْ ②

३) नि:सन्देह तिम्रो शत्रु नै लावारिस नाम-निशान बेगरको हुनेछ ।

إِنَّ شَانِئَكَ هُوَ ٱلْأَبْتَرُ ③



# सूरतुल् काफिरून-१०९




सूरतुल् काफ़िरून मक्की हो, यसमा ६ आयतहरू छन् ।

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

قُلْ يٰٓاَيُّهَا الْكٰفِرُوْنَ ①

१) (हे मोहम्मद स. अ.!) भनिदिनुस् कि हे काफिरहरू ! ।

لَآ اَعْبُدُ مَا تَعْبُدُوْنَ ②

२) जुनलाई तिमीले पूज्दछौ, उनीहरूको म पूजा गर्दिनं ।

وَلَآ اَنْتُمْ عٰبِدُوْنَ مَآ اَعْبُدُ ③

३) र जसको उपासना म गर्दछु, उसको तिमीले उपासना गर्दैनौ ।

وَلَآ اَنَا عَابِدٌ مَّا عَبَدْتُّمْ ④

४) र जसलाई तिमीले पूज्दछौ, तिनीहरुको म पूजा गर्नेवाला छैन।

وَلَآ اَنْتُمْ عٰبِدُوْنَ مَآ اَعْبُدُ ⑤

५) र न तिमी उसको उपासना गर्नेवाला छौ, जसको कि म उपासना गर्दछु ।

لَكُمْ دِيْنُكُمْ وَلِيَ دِيْنِ ⑥

६) तिम्रो निम्ति तिम्रो धर्म छ र मेरो निम्ति मेरो धर्म ।



# सूरतुन् नस्र-११०




सूरतुन् नस्र मदनी हो, यसमा ३ आयतहरु छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

إِذَا جَآءَ نَصْرُ اللّٰهِ وَالْفَتْحُ ①

१) जब अल्लाहको सहायता र विजय प्राप्त भइहालोस् ।

وَرَاَيْتَ النَّاسَ يَدْخُلُوْنَ فِيْ دِيْنِ اللّٰهِ اَفْوَاجًا ②

२) र तिमीले मानिसहरुको समूहमाथि समूह अल्लाहको दीन (धर्म) मा प्रवेश गरिराखेको देखी हाल्छौ ।

فَسَبِّحْ بِحَمْدِ رَبِّكَ وَاسْتَغْفِرْهُ ۚ اِنَّهٗ كَانَ تَوَّابًا ③

३) तब आफ्नो पालनकर्ताको प्रशंसाका साथ गुणगान गर र ऊ सित क्षमायाचना गर । निश्चय नै ऊ क्षमायाचना स्वीकार गर्नेवाला छ ।



# सूरतु तब्बत्-१११




सूरतु तब्बत् मक्की हो, यसमा ५ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) अबू लहबका दुवैहात भाँचिए र त्यो स्वयम् पनि नष्ट भइहाल्यो ।

تَبَّتْ يَدَآ اَبِيْ لَهَبٍ وَّتَبَّ ۝١

२) नत उसको सम्पत्ति उसको काम आयो र न उसको कमाई ।

مَآ اَغْنٰى عَنْهُ مَالُهٗ وَمَا كَسَبَ ۝٢

३) ऊ शीघ्र नै प्रज्वलित आगोमा पर्नेछ ।

سَيَصْلٰى نَارًا ذَاتَ لَهَبٍ ۝٣

४) र उसकी स्त्री पनि जानेछे जुन दाउरा बोक्नेवाली छे ।

وَّامْرَاَتُهٗ ۭ حَمَّالَةَ الْحَطَبِ ۝٤

५) उसको घाँटीमा खजूरबाट बनाइएको डोरी हुनेछ ।

فِيْ جِيْدِهَا حَبْلٌ مِّنْ مَّسَدٍ ۝٥



# सूरतुल् इख़लास-११२



सूरतुल् इख़लास मक्की हो, यसमा ४ आयतहरू छन् ।

بِسْمِ اللَّهِ الرَّحْمَٰنِ الرَّحِيمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

قُلْ هُوَ اللَّهُ أَحَدٌ ۝١

१) तपाई भनिदिनुस् कि त्यो अल्लाह एक छ ।

اللَّهُ الصَّمَدُ ۝٢

२) अल्लाह निरपेक्ष छ ।

لَمْ يَلِدْ وَلَمْ يُولَدْ ۝٣

३) नत उसबाट कोही जन्मेको छ, न ऊ कसैबाट जन्मेको छ ।

وَلَمْ يَكُن لَّهُ كُفُوًا أَحَدٌ ۝٤

४) र न कोही उसको समकक्ष छ ।



## सूरतुल् फलक्-११३



सूरतुल् फलक् मक्की हो, यसमा ५ आयतहरू छन् ।

بِسْمِ اللهِ الرَّحْمٰنِ الرَّحِيْمِ

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

قُلْ اَعُوْذُ بِرَبِّ الْفَلَقِ ①

१) तपाई भन्नुस् कि म प्रातः को स्वामीको शरण माग्दछु ।

مِنْ شَرِّ مَا خَلَقَ ②

२) हरेक कुरोको नराम्रो कार्यबाट, जुन उसले सृष्टि गरेको छ ।

وَمِنْ شَرِّ غَاسِقٍ اِذَا وَقَبَ ③

३) र अँध्यारो रातिको अन्धकारबाट, जबकि त्यसको अँध्यारोले ढाँकिहाल्छ ।

وَمِنْ شَرِّ النَّفّٰثٰتِ فِي الْعُقَدِ ④

४) र गाँठोमा फूँक मार्नेहरू (जादू) को नराम्रो कार्यबाट ।

وَمِنْ شَرِّ حَاسِدٍ اِذَا حَسَدَ ⑤

५) र ईर्ष्यालुको नराम्रो कार्यबाट पनि जबकि त्यसले ईर्ष्या गर्दछ ।



## सूरतुन् नास-११४




सूरतुन् नास मक्की हो, यसमा ६ आयतहरू छन् ।

**शुरू गर्दछु अल्लाहको नामबाट जो अत्यन्तै दयालु र अति कृपालु छ ।**

بِسْمِ اللّٰهِ الرَّحْمٰنِ الرَّحِيْمِ

१) तपाई भनिदिनुस् कि म मानिसहरूको पालनकर्ताको शरण माँग्दछु । — قُلْ اَعُوْذُ بِرَبِّ النَّاسِ ①

२) मानिसहरूको स्वामीको । — مَلِكِ النَّاسِ ②

३) र मानिसहरूको उपास्यको (शरण) । — اِلٰهِ النَّاسِ ③

४) खराब विचार हाल्ने र (उक्साएर) पछि हटी जानेबाट । — مِنْ شَرِّ الْوَسْوَاسِ ۙ الْخَنَّاسِ ④

५) जसले मानिसहरूका हृदयमा नराम्रो कर्मको संच्कार हाल्दछ । — الَّذِيْ يُوَسْوِسُ فِيْ صُدُوْرِ النَّاسِ ⑤

६) त्यो चाहे जिन्नहरूमध्येबाट होस् वा मानिसहरूमध्येबाट । — مِنَ الْجِنَّةِ وَالنَّاسِ ⑥



# فهرس بأسماء السور وبيان المكي والمدني منها

## सूर:हरूको नामको सूची र त्यस मध्ये मक्की र मदनीको वर्णन

إنّ وزارة الشؤون الإسلامية والأوقاف والدعوة والإرشاد
في المملكة العربية السعودية
المشرفة على مجمع الملك فهد
لطباعة المصحف الشريف في المدينة المنورة
إذ يسرّها أن يصدر المجمع هذه الطبعة من القرآن الكريم
وترجمة معانيه وتفسيره إلى اللغة النيبالية
تسأل الله أن ينفع بها الناس
وأن يجزي
خادم الحرمين الشريفين الملك سلمان بن عبد العزيز آل سعود
أحسن الجزاء على جهوده العظيمة في نشر كتاب الله الكريم
والله وليّ التوفيق

---

इस्लामी क्रयाकलाप अथवा अवकाफ तथा आमन्त्रण व निर्देशन मन्त्रालय सउदी अरब संरक्षक शाह फहद पवित्र कुरआन प्रिन्टिङ्ग कोम्पलेक्स मदीना मुनव्वराले यो पवित्र कुरआनलाई नेपाली अनुवादको साथ प्रकाशितगर्दा अति प्रसन्नता महसूस गर्दछ । अल्लाह सित यो बिन्ती छ कि यस अनुवादित कुरआनबाट सबैलाई लाभ पुऱ्याउन् र खादेमुल हरमैन शाह सल्मान बिन अब्दुल अजीज आले सऊदको कुरआन करीम प्रकाशितगर्ने महान कार्यकोलागि आफनो कृपा एवं दया प्रदान गरुन । ( आमीन )

अल्लाह नै तौफीक दिनेवाला हो ।






---

www.qurancomplex.gov.sa
contact@qurancomplex.gov.sa

ⓒ **مجمع الملك فهد لطباعة المصحف الشريف ، ١٤٣٦ هـ**
فهرسة مكتبة الملك فهد الوطنية أثناء النشر.

**مجمع الملك فهد لطباعة المصحف الشريف**
ترجمة معاني القرآن الكريم إلى اللغة النيبالية / مجمع الملك فهد لطباعة المصحف الشريف - المدينة المنورة، ١٤٣٦هـ
١٢٦٤ ص ؛ ١٤ × ٢١ سم

**ردمك:** ١-٠٩-٨١٧٣-٦٠٣-٩٧٨

١- القرآن-ترجمة-اللغة النيبالية أ. العنوان
ديوي ٤، ٢٢١ ٤٥٦٤ / ١٤٣٦

رقم الإيداع: ٤٥٦٤ / ١٤٣٦

**ردمك :** ١-٠٩-٨١٧٣-٦٠٣-٩٧٨










# القرآن الكريم

وترجمة معانيه وتفسيره
إلى اللغة النيبالية